# पर्वतारोहण सम्वन्धी नियमावली, २०५९

नेपाल राजपत्रमा प्रकाशित मिति : २०५९।१।१९

पहिलो संशोधन मिति : २०६४।४।२१

पर्यटन ऐन, २०३५ को दफा ५६ ले दिएको अधिकार प्रयोग गरी नेपाल सरकारले देहायका नियमहरू बनाएकोछ ।

१. संक्षिप्त नाम र प्रारम्भः- (१) यी नियमहरूको नाम "पर्वतारोहण सम्बन्धी नियमावली, २०५९" रहेकोछ ।

(२) यो नियमावली तुरुन्त प्रारम्भ हुनेछ ।

२ परिभाषा: विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस नियमावलीमा, -

(क) "ऐन" भन्नाले पर्यटन ऐन, २०३५ सम्झनु पर्छ ।

(ख) "अनुमति" भन्नाले पर्वतारोही दललाई हिमालचुली आरोहण गर्न यस नियमावली बमोजिम दिइने पर्वतारोहण अनुमति सम्झनु पर्छ ।

(ग) "मन्त्रालय" भन्नाले संस्कृति, पर्यटन तथा नागरिक उडड्यन मन्त्रालय सम्झनु पर्छ ।

३. पर्वतारोहणको लागि अनुमति लिनु पर्ने : (१) पर्वतारोहणको लागि अनुमति लिन चाहने पर्वतारोही दलले अनुसूची- १ बमोजिमको ढाँचामा मन्त्रालय समक्ष दरखास्त दिनु पर्नेछ ।

(२) उपनियम (१) बमोजिम दरखास्त प्राप्त भएमा मन्त्रालयले सो सम्बन्धमा आवश्यक जाँचबुझ गर्दा दरखास्तवालालाई अनुमति दिन मनासिव देखिएमा नियम ४ बमोजिमको सलामी रकम लिई अनुसूची-२ बमोजिमको ढाँचामा अनुमति दिनेछ ।

तर १६ वर्ष उमेर नपुगेको व्यक्तिलाई अनुमति दिइने छैन।

(३) उपनियम (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि कुनै पर्वतारोही दलले सगरमाथा हिमालचुलीको लागि सलामी रकमको पाँच प्रतिशत र अन्य हिमालचुलीको लागि सलामी रकमको दश प्रतिशत रकम तिरेमा र त्यस्तो दरखास्तवालालाई अनुमति दिन मनासिव देखिएमा अनुसूची-३ बमोजिमको ढाँचामा प्रारम्भिक पर्वतारोहण अनुमति दिन सकिनेछ ।

(४) उपनियम (३) बमोजिम प्रारम्भिक पर्वतारोहण अनुमति पाएको पर्वतारोही दलले नियम ४ बमोजिम बांकी सलामी रकम बुझाएमा सो रकम बुझाएको तीन दिनभित्र मन्त्रालयले उपनियम (२) बमोजिम अनुमति दिनेछ ।

तर ७००० मिटर भन्दा कम उचाई भएको र नियम ३२ को उपनियम (१) को खण्ड (क) र (ख) बमोजिमका हिमालचुली बाहेक अन्य हिमालचुली आरोहण गर्न प्रारम्भिक पर्वतारोहण अनुमति पाएको पर्वतारोही दलले आफ्नो दलका सदस्यमा हेरफेर वा थप♦घट गर्न चाहेमा मन्त्रालयले दरखास्त परेको दश दिनपछि मात्र दरखास्तवालालाई अनुमति दिनेछ ।

♦ पहिलो संशोधनद्धारा थप गरिएको ।

(५) उपनियम (२) वा (४) बमोजिम अनुमति प्राप्त पर्वतारोही दलले पर्वतारोहण गर्न जानु अघि मन्त्रालयले दिएको पर्वतारोहण सम्बन्धी जानकारी (ब्रिफिङ) लिनु पर्नेछ ।

४. पर्वतारोहणको लागि तिर्नुपर्ने सलामी रकम र अवधि : (१) पर्वतारोही दलले पर्वतारोहण गर्दा तिर्नु पर्ने सलामी रकम अनुसूची-४ मा उल्लेख भए बमोजिम हुनेछ ।

(२) प्रारम्भिक पर्वतारोहण अनुमति पाएको पर्वतारोही दलले बाँकी सलामी रकम त्यस्तो अनुमति पाएको मितिले एक वर्षभित्र बुझाउनु पर्नेछ ।

(३) कुनै पर्वतारोही दलले उपनियम (२) बमोजिमको म्यादभित्र बांकी सलामी रकम नबुझाएमा त्यस्तो प्रारम्भिक पर्वतारोहण अनुमति रद्द हुनेछ ।

५. पर्वतारोहण अभियान पछि सार्न वा हिमालचुली परिवर्तन गर्न सकिने : (१) कुनै पर्वतारोही दलले आफ्नो पर्वतारोहण अभियान पछि सार्न वा अनुमतिमा उल्लिखित हिमालचुली परिवर्तन गर्न चाहेमा त्यस्तो पर्वतारोहण अभियान शुरु हुनु अघि पर्वतारोहण सम्बन्धी कार्यक्रम सहितको अवधि उल्लेख गरी वा परिवर्तन गर्न चाहेको हिमालचुली निश्चित गरी अनुमतिको लागि मन्त्रालय समक्ष दरखास्त दिनु पर्नेछ ।

(२) उपनियम (१) बमोजिम पर्वतारोहण अभियान पछि सार्न चाहने पर्वतारोही दललाई मन्त्रालयले बढीमा दुई वर्षसम्म पर्वतारोहण अभियान पछि सार्ने अनुमति दिन सक्नेछ ।

(३) उपनियम (१) बमोजिम हिमालचुली परिवर्तन गर्दा पर्वतारोही दलले त्यसरी परिवर्तन गर्ने हिमालचुलीको लागि थप सलामी रकम तिर्नु पर्ने भए सो रकम लिई मन्त्रालयले हिमालचुली परिवर्तन गर्न अनुमति दिनेछ ।

तर परिवर्तन हुने हिमालचुलीको सलामी रकम भन्दा पहिले बुझाएको सलामी रकम बढी भएमा त्यस्तो रकम फिर्ता दिइने छैन ।

६. पर्वतारोही दलले पालन गर्नु पर्ने शर्तहरू : अनुमति प्राप्त पर्वतारोही दलले देहायका शर्तहरू पालन गर्नु पर्नेछ :-

(क) अनुमति पाएको हिमालचुलीमा मात्र आफ्नो गतिविधि सीमित राख्ने,

(ख) पर्वतारोहण गर्ने क्षेत्रका जनताको रीति-रिवाज, धार्मिक, सामाजिक तथा साँस्कृतिक परम्परामा आघात पुऱ्याउने कुनै किसिमको कार्य गर्न नहुने,

(ग) आधार शिविर नपुगेसम्म बिभिन्न ठाउँमा स्थापना गरिने शिविरहरू सकेसम्म स्थानीय जनतालाई मान्य हुने वा नेपाल सरकारले तोकिदिएको ठाउँमा मात्र स्थापना गर्ने,

(घ) नेपाल सरकारले अनुमति दिएको बाहेक अन्य कुनै हातहतियार, बिस्फोटक पदार्थ आदि साथमा लैजान नहुने,

(ङ) नेपाल अधिराज्यको सुरक्षा तथा प्रतिष्ठामा प्रतिकूल असर पर्ने कुनै किसिमको काम गर्न नहुने,

(च) स्वीकृति पाए बाहेकका दूर सञ्चारको साधन प्रयोग गर्न नहुने,

(छ) पर्वतारोहण क्षेत्र वरपरका रुख पात, अन्य वन्य सम्पदा तथा वातावरणीय स्वच्छतालाई क्षति पुऱ्याउन वा मास्न नहुने,

(ज) पर्वतारोहणको समयमा कुनै दूर्लभ तथा ऐतिहासिक महत्वका मालसामान फेला परेमा सम्पर्क अधिकृतलाई बुझाउने,

(झ) वातावरण दूषित हुन नदिन मन्त्रालयले तोके बमोजिम काम गर्ने,

(ञ) पर्वतारोहण सम्बन्धी अबस्था तथा कार्यक्रमको सम्बन्धमा सम्पर्क अधिकृतलाई दैनिक जानकारी गराउने ।

(ट) नेपाल अधिराज्यसित जोडिएको विदेशी राज्यसंगको अन्तर्राष्ट्रिय सीमानामा पर्ने हिमालचुली आरोहण गर्न अनुमति पाएका पर्वतारोही दलले अन्तर्राष्ट्रिय सीमाना उल्लंघन गर्न नहुने ।

७. सञ्चार साधन पैठारी गर्न स्वीकृत दिन सक्नेः नेपाल सरकारले अनुमति प्राप्त पर्वतारोही दललाई पर्वतारोहण अभियान समाप्त भएपछि स्वदेश फिर्ता लैजाने शर्तमा दुईवटा स्याटेलाइट टेलिफोन, बाह्रवटा वाकीटकी, आधार शिविरबाट काठमाण्डौसम्म कुरा गर्न सक्ने क्षमता भएको दुईवटा वायरलेस र आधार शिविरदेखि सबभन्दा नजिकको प्रहरी चौकी वा दूर सञ्चार साधन भएको ठाँउसम्म कुरा गर्न सकिने क्षमता भएको दुईवटा वायरलेस अस्थायी रुपमा प्रयोग गर्ने गरी पैठारी गर्न स्वीकृत दिन सक्नेछ ।

♦८. <u>सम्पर्क अधिकृत खटाउने</u> : (१) ऐनको दफा २० बमोजिम सम्पर्क अधिकृत खटाउँदा नेपाल सरकारले देहायका व्यक्तिलाई खटाउन सक्नेछ :

(क) निजामती सेवाका राजपत्रअनङ्कित प्रथम श्रेणी वा सो भन्दा माथिल्लो श्रेणीको कर्मचारी,

(ख) निजामती सेवाका राजपत्राङ्कित तृतीय श्रेणीका अधिकृत सरहका नेपाली सेना वा नेपाल प्रहरी वा सशस्त्र प्रहरीका अधिकृत,

(ग) सगरमाथा हिमालचुलीको सफल आरोहण गरेका नेपाली आरोहीहरु मध्ये मन्त्रालयले तोकेको आरोहण सम्वन्धी संस्थाले सिफारिस गरेको आरोही ।

(२) उपनियम (१) बमोजिम सम्पर्क अधिकृत खटाउँदा देहायका शर्त पूरा गरेको हुनु पर्नेछ :

(क) पर्वतारोहण सम्बन्धी स्वीकृत आधारभूत प्रशिक्षण प्राप्त गरेको,

(ख) कम्तीमा स्नातकोपाधि हासिल गरेको,

तर उपनियम (१) को खण्ड (ग) बमोजिमको आरोहीका हकमा कम्तीमा प्रवेशिका उत्तीर्ण गरेको,

(ग) सम्वन्धित हिमालचुलीको आधार शिविरसम्म जान शारीरिक रुपमा योग्य रहेको भनी नेपाल सरकारबाट मान्यता प्राप्त चिकित्सकले प्रमाणित गरेको, र

(घ) पर्वतारोही दलसँग वार्तालाप गर्न सक्ने अंग्रेजी वा अन्य भाषाको ज्ञान भएको सम्बन्धमा मान्यता प्राप्त संस्थाबाट प्रमाणपत्र प्राप्त गरेको ।

---

♦ पहिलो संशोधनद्वारा संशोधित

९. सम्पर्क अधिकृतको काम, कर्तव्य र अधिकार : सम्पर्क अधिकृतको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ :-

(क) पर्वतारोही दललाई परेका समस्या सुल्झाउने प्रयास गर्ने,

(ख) पर्वतारोही दलसंग जाने कामदारले बोक्ने भारीको तौल सम्बन्धमा निरीक्षण तथा अनुगमन गर्ने,

(ग) पर्वतारोहणको अभियान चालू रहेसम्म आधार शिविरमा बस्ने,

(घ) पर्वतारोहणको प्रगति तथा पर्वतारोहणको क्रममा कुनै दुर्घटना भएमा त्यसको जानकारी छिटो साधनद्वारा मन्त्रालयमा पठाउने,

(ङ) सरदार, पर्वतीय पथ प्रदर्शक तथा कामदारलाई अनुशासनमा राखी कुनै मनमुटाव वा झगडा हुन नदिन प्रयास गर्ने,

(च) पर्वतारोही दलका कुनै सदस्य र स्थानीय जनता वा सरदार, पथ प्रदर्शक वा कामदार बीच कुनै अप्रिय घटना वा झगडा भएमा आफैले मिलाउने र मिलाउन नसक्ने भएमा नजिकको प्रहरी चौकी, जिल्ला प्रशासन कार्यालय वा स्थानीय निकायको मद्दत लिई आवश्यक कारवाही गर्ने गराउने,

(छ) वातावरणीय सरसफाई तथा फोहर मैला व्यवस्थापन सम्बन्धमा आवश्यक कार्य गर्ने, गराउने,

(ज) पर्वतारोही दल वा सो दलको कुनै सदस्यले अनधिकृत रुपमा पर्वतारोहण गर्न खोजेमा त्यस्तो कार्य रोक्ने तथा त्यसको सूचना यथाशीघ्र मन्त्रालयमा पठाउने,

(झ) पर्वतारोही दलको कुनै सदस्य, सरदार, पथ प्रदर्शक वा कामदारको दुर्घटनामा परी मृत्यु वा अङ्गभङ्ग भएमा वा सो मध्ये कसैले कुनै गम्भीर अपराध गरेमा वा गर्ने सम्भावना भएमा वा पर्वतारोही दलले प्रयोग गरेको सञ्चार साधन वा अन्य सामानहरू हराएमा यथाशिघ्र त्यसको जानकारी सहितको प्रतिवेदन मन्त्रालयमा पठाउने,

(ञ) पर्वतारोही दलका सदस्य र सो दलसंग जाने व्यक्ति बीच दोभाषेको रुपमा काम गर्ने,

(ट) पर्वतारोहणको शिविर राख्ने स्थान सम्बन्धमा पर्वतारोही दलको नेतालाई सल्लाह दिने,

(ठ) पर्वतारोही दलमा संलग्न कामदार तथा अन्य व्यक्तिको लगत सो दलको नेताद्वारा प्रमाणित गराई मन्त्रालयमा पठाउने,

(ड) पर्वतारोही दलले फेला पारेका दुर्लभ तथा ऐतिहासिक महत्वका मालसामान बुझिलिई नेपाल सरकारले तोकेको ठाउँमा सुरक्षित बुझाउने,

(ढ) मन्त्रालयले दिएको निर्देशन बमोजिम काम गर्ने ।

१०. सम्पर्क अधिकृतलाई दिनु पर्ने सुविधा : पर्वतारोही दलले सम्पर्क अधिकृतलाई दिनु पर्ने सुविधा अनुसूची - ५ मा उल्लेख भए बमोजिम हुनेछ ।

११. सुविधा फिर्ता गराउन सक्ने : कुनै सम्पर्क अधिकृत पर्वतारोही दलसँग नगएमा मन्त्रालयले निजको काज रद्द गरी निजले यस नियमावली बमोजिम पाएको सुविधा फिर्ता गराउन सक्नेछ ।

१२. निरुत्साहित गर्न नहुने : पर्वतारोही दल र पर्वतारोहणको व्यवस्था मिलाउने संस्थाले सम्पर्क अधिकृतलाई पर्वतारोही दलसंग जान निरुत्साहित गर्न हुँदैन ।

१३. सरदारको काम र कर्तव्य : सरदारको काम र कर्तव्य देहाय बमोजिम हुनेछ :-

(क) सम्पर्क अधिकृतसंग समन्वय राखी काम गर्ने,

(ख) पर्वतीय पथ प्रदर्शक, उचाईमा जाने कामदार, आधार शिविरका कामदार तथा स्थानीय कामदारको सामुहिक हितलाई ध्यानमा राखी काम गर्ने,

(ग) पर्वतारोही दलको मालसामान कामदारको लापरवाहीबाट हिनामिना हुन नदिने,

(घ) पर्वतारोही दलका सदस्यलाई सुरक्षित र सरल तरिकाले आरोहण गर्न आवश्यक सरसल्लाह दिने,

(ङ) शिविरमा खाना तथा सरसामान उपयुक्त समयमा पुऱ्याउने व्यवस्था गर्ने,

(च) सम्पर्क अधिकृत, पर्वतारोही दलका कुनै सदस्य, पर्वतीय पथ प्रदर्शक वा उचाईमा जाने कामदार, आधार शिविरका कामदार वा स्थानीय कामदार कुनै आपत्तिमा परेमा निजलाई उद्धार गर्ने काममा मद्दत पुऱ्याउने,

(छ) वातावरणीय सरसफाई तथा फोहरमैला व्यवस्थापन सम्बन्धमा यस नियमावली तथा मन्त्रालयले तोकेका शर्त बमोजिम कार्य गर्ने, गराउने,

(ज) मन्त्रालय तथा सम्पर्क अधिकृतले दिएको निर्देशन बमोजिम काम गर्ने ।

१४. सरदारको योग्यता र स्तर तोक्न सक्ने: नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी सरदारको योग्यता र स्तर तोक्न सक्नेछ ।

१५. पर्वतीय पथ प्रदर्शकको काम र कर्तव्य : पर्वतीय पथ प्रदर्शकको काम र कर्तव्य देहाय बमोजिम हुनेछ :-

(क) सरदारसंग समन्वय राखी काम गर्ने,

(ख) कामदारको लापरवाहीबाट मालसामानहरू हिनामिना हुन नदिन आवश्यक व्यवस्था गर्ने,

(ग) अनुमतिपत्रमा उल्लिखित मार्गबाट मात्र पर्वतारोहण गर्न पर्वतारोही दललाई पथ प्रदर्शन गर्ने,

(घ) कुनै कारणबश आधार शिविरभन्दा माथिको पर्वतारोहणको मार्ग बदल्नु परेमा सम्पर्क अधिकृतसँग सम्पर्क राखी निजको आदेश बमोजिम गर्ने,

(ङ) पर्वतारोही दलका सदस्य वा सरदारलाई सुरक्षित र सरल तरीकाले आरोहण गर्ने सम्बन्धमा आवश्यक सरसल्लाह दिने,

(च) सम्पर्क अधिकृत, पर्वतारोही दलको कुनै सदस्य, सरदार उचाईमा जाने कामदार, आधार शिविरका कामदार वा स्थानीय कामदार कुनै आपत्तिमा परेमा निजलाई उद्धार गर्ने काममा मद्दत पुऱ्याउने,

(छ) आधार शिविर भन्दा माथि सरसामान प्रयोग गर्दा निस्केको फोहरमैला अनिवार्य रुपले आधार शिविरसम्म ल्याउने,

(ज) मन्त्रालय, सम्पर्क अधिकृत तथा सरदारले दिएको निर्देशन बमोजिम काम गर्ने ।

१६. सरदार, पर्वतीय पथ प्रदर्शक, उचाईमा जाने कामदार, आधार शिविरका कामदार र स्थानीय कामदारलाई दिनुपर्ने सुविधा : पर्वतारोही दलले सरदार, पर्वतीय पथ प्रदर्शक, उचाईमा जाने कामदार, आधार शिविरका कामदार र स्थानीय कामदारलाई दिनुपर्ने सुविधा अनुसूची -६ मा उल्लेख भए बमोजिम हुनेछ ।

१७. इच्छापत्र पेश गर्नु पर्ने : सम्पर्क अधिकृत, सरदार, पर्वतीय पथ प्रदर्शक, उचाईमा जाने कामदार र आधार शिविरका कामदारले पर्वतारोहणमा जानु अघि अनुसूची-७ बमोजिमको ढाँचामा तीन प्रति इच्छापत्र भरी एक प्रति आफूले काम गर्ने संस्था वा कार्यालयमा, एक प्रति पर्वतारोहण संघमा र एक प्रति मन्त्रालयमा पेश गर्नु पर्नेछ ।

१८. करार गर्नु पर्ने : पर्वतारोही दल वा पर्वतारोहणको व्यवस्था मिलाउने संस्थाले सरदार, पर्वतीय पथ प्रदर्शक, उचाईमा जाने कामदार र आधार शिविरका कामदारसंग अनुसूची–८ बमोजिम करार गरेर मात्र काममा लगाउनु पर्नेछ ।

१९. व्यक्तिगत दुर्घटना बीमा तथा क्षतिपूर्ति सम्बन्धी व्यवस्था: (१) पर्वतारोही दलले पर्वतारोहणको लागि प्रस्थान गर्नु अघि आफ्नो साथमा जाने सम्पर्क अधिकृत, सरदार, पर्वतीय पथ प्रदर्शक, उचाईमा जाने कामदार तथा आधार शिविरका कामदारलाई पर्वतारोहण अभियान समाप्त गरी नफर्कुन्जेलसम्मको लागि नेपाल सरकारबाट मान्यता प्राप्त कुनै बीमा कम्पनीसित देहायको रकममा नघट्ने गरी व्यक्तिगत दुर्घटना बीमा गराउनु पर्नेछ :-

(क) सम्पर्क अधिकृतको लागि छ लाख रुपैयाँ,

(ख) सरदार र पर्वतीय पथ प्रदर्शकको लागि पाँच लाख रुपैयाँ,

(ग) उचाईमा जाने कामदारको लागि चार लाख रुपैयाँ,

(घ) आधार शिविरका कामदारको लागि तीन लाख पचास हजार रुपैयाँ ।

(२) पर्वतारोही दलले उपनियम (१) बमोजिम स्थानीय कामदारको बीमा गराउँदा दुई लाख पचास हजार रुपैंयामा नघटाई गर्नु पर्नेछ ।

(३) उपनियम (१) वा (२) वा ऐनको दफा २५ को उपदफा (२) वा (३) बमोजिम बीमा वा क्षतिपूर्ति पाउने रकम सम्बन्धित व्यक्ति वा निजको हकवालालाई दिलाई दिने जिम्मेवारी सम्बन्धित पर्वतारोही दल तथा सो पर्वतारोहणको व्यवस्था मिलाउने संस्थाको हुनेछ ।

(४) उपनियम (१) वा (२) वा ऐनको दफा २५ को उपदफा (२) वा (३) बमोजिम बीमा वा क्षतिपूर्ति पाउने व्यक्ति नाबालक भएमा सम्बन्धित बीमा कम्पनी वा पर्वतारोही दलले त्यस्तो रकम मन्त्रालयमा बुझाउनु पर्नेछ र त्यसरी रकम प्राप्त भएमा मन्त्रालयले त्यस्तो नाबालक बालिग नभएसम्म निजको पालन पोषणको लागि आवश्यक व्यवस्था मिलाउनको निमित्त उपयुक्त सम्झेको व्यवस्था गर्नेछ ।

(५) पर्वतारोही दलले सम्पर्क अधिकृत, सरदार, पर्वतीय पथ प्रदर्शक, उचाईमा जाने कामदार, आधार शिविरका कामदार र स्थानीय कामदारको दुर्घटनामा परी सामान्य चोटपटक लाग्दा गर्नु पर्ने औषधोपचारको लागि नेपाल सरकारबाट मान्यता प्राप्त बीमा कम्पनीसित कम्तीमा पचास हजार रुपैयाँको बीमा गराउनु पर्नेछ ।

२०. आपतकालिन उद्धारको लागि बीमा गराउनु पर्ने : पर्वतारोही दलले ऐनको दफा २९ को प्रयोजनको लागि मन्त्रालयले तोके बमोजिमको रकम नेपाल सरकारबाट मान्यता प्राप्त कुनै बीमा कम्पनीसित बीमा गराउनु पर्नेछ ।

२१. आरोहण गर्न अवसर दिनु पर्ने : अन्तिम शिविरमा पुगेका सरदार, पर्वतीय पथ प्रदर्शक वा उचाईमा जाने कामदारलाई पर्वतारोही दलले हिमालचुली आरोहण गर्न अवसर दिनु पर्नेछ ।

२२. भारीको तौल : (१) पर्वतारोही दलले स्थानीय कामदारलाई तीस के.जी. भन्दा बढी तौलको भारी बोकाउनु हुँदैन ।

(२) पर्वतारोही दलले उचाईमा जाने कामदारलाई देहायको उचाईमा देहायको भन्दा बढी तौलको भारी बोकाउनु हुँदैन :-

(क) ५,००० मिटर देखि ६,००० मिटरसम्मको उचाईमा २० के.जी.,
(ख) ६००१ मिटर देखि ७,००० मिटरसम्मको उचाईमा १७ के.जी.,
(ग) ७,००१ मिटर देखि ८,००० मिटरसम्मको उचाईमा १४ के.जी.,
(घ) ८,००० मिटरभन्दा माथिको उचाईमा १२ के.जी.।

(३) उपनियम (१) वा (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि विशेष परिस्थिति परेमा सम्पर्क अधिकृत, पर्वतारोही दलका नेता र भारी बोक्ने कामदारको आपसी मञ्जूरीमा सो उपनियमहरूमा उल्लेखित तौल भन्दा थप ५ के.जी. तौलसम्मको भारी बोकाउन सकिनेछ ।

२३. पर्वतारोही दलको नेताको दायित्व र जिम्मेवारी : पर्वतारोही दलको नेताको दायित्व र जिम्मेवारी देहाय बमोजिम हुनेछः-

(क) सम्पर्क अधिकृत, सरदार, पर्वतीय पथ प्रदर्शक, उचाईमा जाने कामदार, आधार शिविरका कामदार तथा स्थानीय कामदारको राम्रो खानपिन तथा बसोवासको व्यवस्था गर्ने,

(ख) पर्वतारोही दलले यस नियमावली बमोजिम तिर्नु वा बुझाउनु पर्ने रकम वा क्षतिपूर्ति तिर्नु वा बुझाउनु पर्ने,

(ग) लश्करमार्ग, आधार शिविर तथा आधार शिविर भन्दा माथि आफ्नो दलबाट प्रयोग गरिएको सामानबाट निस्किएको फोहरमैला यस नियमावली बमोजिम व्यवस्थापन गर्ने,

(घ) यस नियमावली बमोजिम तोकिएको शर्त तथा मन्त्रालय र सम्पर्क अधिकृतले दिएको निर्देशन बमोजिम काम गर्ने, गराउने ।

२४. पर्वतारोहण सम्बन्धी समाचारको प्रसारण : पर्वतारोही दलले पर्वतारोहण सम्बन्धी समाचार सम्पर्क अधिकृत मार्फत नेपाल सरकारलाई दिनु पर्नेछ ।

२५. मालसामान बिक्री गर्न नहुने : पर्वतारोही दलले यस नियमावली वा प्रचलित कानून बमोजिम भन्सार छूट पाई पैठारी गरेको मालसामान नेपाल सरकारको स्वीकृति विना बिक्री गर्न वा अन्य तवरले कुनै व्यक्तिलाई हक हस्तान्तरण गर्नु हुँदैन ।

२६. धरौटी रकम राख्नु पर्ने:(१) पर्वतारोही दलले नियम ३ को उपनियम (५) बमोजिम पर्वतारोहण सम्बन्धी जानकारी (ब्रिफिङ्ग) लिनु अघि फोहरमैला व्यवस्थापनको लागि अनुसूची-९ बमोजिमको रकम मन्त्रालयमा धरौटी राख्नु पर्नेछ ।

(२) उपनियम (१) बमोजिम धरौटी राखिएको रकम यस नियमावली बमोजिम फोहरमैला व्यवस्थापन गरिएको प्रमाण मन्त्रालयमा पेश गरेपछि मात्र फिर्ता दिइनेछ ।

२७. फोहरमैलाको वर्गीकरण र व्यवस्थापनः (१) पर्वतारोही दलले प्रयोग गरेका वस्तुबाट भएको फोहरमैला व्यवस्थापन गर्ने प्रयोजनको लागि फोहरमैलालाई देहाय बमोजिम वर्गीकरण गरिएकोछ :-

(क) नष्ट गर्न सकिने फौहोरमैला,

(ख) पुनः प्रशोधन गर्न सकिने फौहोरमैला,

(ग) पुनः निकासी गर्नु पर्ने फोहरमैला ।

(२) उपनियम (१) बमोजिमको फोहरमैला अन्तर्गत पर्ने वस्तुहरू अनुसूची-१० मा उल्लेख भए बमोजिम हुनेछ ।

(३) पर्वतारोही दलले उपनियम (१) को खण्ड (क) बमोजिमको फोहरमैला नेपाल सरकारले कुनै क्षेत्रमा फोहरमैला व्यवस्थापनको कार्य गर्न कुनै निकाय वा संस्थालाई तोकिदिएको भए सोही निकाय वा संस्थाको रोहबरमा र त्यस्तो निकाय वा संस्था नतोकिएको भए सम्पर्क अधिकृत वा सम्बन्धित स्थानीय निकायका प्रतिनिधिको रोहबरमा र सम्पर्क अधिकृत वा स्थानीय निकायका प्रतिनिधि पनि नभएमा सरदारको रोहवरमा सार्वजनिक ठाउँलाई प्रतिकूल असर नपर्ने गरी नष्ट गर्नु वा खाडलमा पुर्नु पर्नेछ ।

(४) पर्वतारोही दलले उपनियम (१) को खण्ड (ख) बमोजिमको फोहरमैला काठमाडौंमा ल्याई नेपाल सरकारले तोकेको निकाय वा संस्थामा बुझाउनु पर्नेछ ।

(५) पर्वतारोही दलले उपनियम (१) को खण्ड (ग) बमोजिमको फोहरमैला आफ्नो देशमा लैजानु पर्नेछ ।

♦२७क. सम्पर्क अधिकृत, पर्वतारोही दलका सदस्य वा अन्य व्यक्तिको मृत शरीरको व्यवस्थापन गर्ने :

(१) कुनै सम्पर्क अधिकृत, पर्वतारोही दलका सदस्य, सरदार, पर्वतीय पथ प्रदर्शक, उचाईमा जाने कामदार, आधार शिविरका कामदार तथा स्थानीय कामदारको मृत्यु भएमा सम्बन्धित पर्वतारोही दको नेताले त्यस्तो मृतकको शरीर हिमनदीमा नपर्ने गरी आधार शिविरदेखि तल्लो भागमा लगी व्यवस्थापन गर्नु पर्नेछ ।

(२) कुनै पर्वतारोही दलको नेताको मृत्यु भएमा त्यस्तो पर्वतारोही दलको सदस्यले र एक सदस्यीय पर्वतारोहीको वा पर्वतारोही दलका सबै सदस्यको मृत्यु भएमा सम्बन्धित पर्वतारोहणको व्यवस्था मिलाउने संस्थाले मृतकको शरीर हिमनदीमा नपर्ने गरी आधार शिविरदेखि तलको भागमा लगी व्यवस्थापन गर्नु पर्नेछ ।

(३) हिम दरार (क्रेभास) मा परी, हिम पहिरोमा पुरिई वा अन्य कारणबाट पर्वतारोही दलको सदस्य, कामदार वा पर्वतारोहीसँग सम्बन्धित अन्य व्यक्तिको मृत्यु भई मृत शरीरको अवस्थिति एकिन नभएमा सम्बन्धित पर्वतारोहणको व्यवस्था मिलाउने संस्था, पर्वतारोहण दल, सम्पर्क अधिकृत र खोज तथा उद्धार कार्यमा संलग्न अन्य व्यक्तिले सोही व्यहोराको प्रतिवेदन मन्त्रालयमा पेश गर्नु पर्नेछ ।

(४) उपनियम (३) बमोजिमको प्रतिवेदन प्राप्त भएमा मन्त्रालयले त्यस्तो मृत शरीर फेला परेका बखत हिमनदीमा नपर्ने गरी आधार शिविरभन्दा तलको भागमा ल्याई

---

♦ पहिलो संशोधनद्वारा थप गरिएको ।

व्यवस्थापन गर्न सम्बन्धित पर्वतारोहणको व्यवस्था मिलाउने संस्थालाई आदेश दिई सो सम्बन्धमा त्यस्तो संस्थाको प्रमुखको कबुलियत गराउनु पर्नेछ ।

(५) उपनियम (४) बमोजिम मन्त्रालयले दिएको आदेश वा कबुलियतनामामा उल्लेख भएका शर्तको पालना गर्नु सम्बन्धित पर्वतारोहणको व्यवस्था मिलाउने संस्थाको कर्तव्य हुनेछ ।

(६) उपनियम (३) बमोजिम प्राप्त भएको प्रतिवेदन गलत ठहरिएमा मन्त्रालयले त्यस्तो पर्वतारोहणको व्यवस्था मिलाउने संस्था, पर्वतारोही दल, सम्पर्क अधिकृत र खोज तथा उद्धार कार्यमा संलग्न व्यक्ति मध्ये सरकारी कर्मचारीलाई प्रचिलत सेवा, शर्त सम्बन्धी कानून बमोजिम र अन्य व्यक्तिलाई प्रचलित कानून बमोजिम कारवाही गर्न सम्बन्धित नियकामा लेखी पठाउनु पर्नेछ ।

तर मन्त्रालय अन्तर्गतका कर्मचारीलाई आफैले कारवाही गर्नु पर्नेछ ।

(७) यो नियमावली प्रारम्भ हुनु अघि हिमशिखरमा मृत्यु भएका पर्वतारोही दलको सदस्य वा अन्य व्यक्तिको मृत शरीरको व्यवस्थापन सम्बन्धमा मन्त्रालयले आवश्यक व्यवस्था गर्न सक्नेछ ।

२८. आधार शिविरमा झर्नु पर्ने : (१) पर्वतारोही दल पर्वतारोहणको लागि काठमाडौंबाट प्रस्थान गरेको मितिले देहायको अवधिभित्र आधार शिविरमा झरिसक्नु पर्नेछ :-

(क) ८,००० मिटर भन्दा बढी उचाई भएको हिमालचुलीको हकमा पचहत्तर दिन,

(ख) ७,००० मिटर देखि ८,००० मिटरसम्म उचाई भएको हिमालचुलीको हकमा साठी दिन,

(ग) ७,००० मिटर भन्दा कम उचाई भएको हिमालचुलीको हकमा पैंतालीस दिन ।

(२) उपनियम (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि खुम्बू, अन्नपूर्ण र मनास्लु हिमश्रृंखलाका हिमालचुली बाहेकका अन्य हिमालचुलीको लागि आधार शिविरमा झर्नु पर्ने अवधिमा सम्बन्धित पर्वतारोही दलको अनुरोधमा पन्ध्र दिनसम्म थप गर्न सकिनेछ ।

२९. निर्देशन दिन सक्ने : सम्पर्क अधिकृतले ऐन, यस नियमावली, अन्य प्रचलित कानून तथा मन्त्रालयको निर्देशनको अधीनमा रही पर्वतारोही दलका सदस्य, सरदार, पर्वतारोहण अभियानसंग सम्बन्धित कामदारलाई आवश्यक निर्देशन दिन सक्नेछ र त्यस्तो निर्देशनको पालना गर्नु पर्वतारोही दलका सदस्य, सरदार तथा सम्बन्धित कामदारको कर्तव्य हुनेछ ।

३०. प्रतिवेदन पेश गर्नु पर्ने : सम्पर्क अधिकृतले पर्वतारोहण सम्बन्धी अभियान समाप्त भएको मितिले पन्ध्र दिनभित्र अनुसूची-११ बमोजिमको ढाँचामा पर्वतारोहण सम्बन्धी प्रतिवेदन मन्त्रालयमा पेश गर्नु पर्नेछ ।

३१. पर्वतारोहण सम्बन्धी प्रतिवेदन पुस्तक, तस्वीर आदि पेश गर्नु पर्ने : (१) पर्वतारोही दलको नेताले नेपाल अधिराज्यबाट फर्कनु अघि डिब्रिफिङ्गको लागि मन्त्रालयमा आफै उपस्थित भई अनुसूची -१२ बमोजिमको ढाँचामा पर्वतारोहण सम्बन्धी प्रतिवेदन पेश गर्नु पर्नेछ ।

(२) पर्वतारोही दलको नेताले पर्वतारोहण अभियान समाप्त भएको पाँच महीनाभित्र आफ्नो पर्वतारोही दलले आरोहण गरेको मार्गको नक्शा सहितको विस्तृत सचित्र सम्बन्धी प्रतिवेदन अंग्रेजी वा नेपाली भाषामा तयार गरी मन्त्रालयमा पेश गर्नु पर्नेछ ।

(३) पर्वतारोही दलले उपनियम (२) बमोजिम सचित्र प्रतिवेदन पेश गर्दा आफूले आरोहण गरेको मार्गबाट लिइएको सम्बन्धित हिमालचुलीको तस्वीर, आधार शिविर लगायत विभिन्न शिविरहरूको तस्वीर र हिमालचुलीमा पुगेको बखत आरोही सदस्यले तस्वीर लिएको भए त्यस्तो तस्वीरको एक एक प्रति मन्त्रालयमा पेश गर्नु पर्नेछ ।

(४) कुनै पर्वतारोही दलले पर्वतारोहणबाट फर्केपछि आफ्नो पर्वतारोहण सम्बन्धी कुनै पुस्तक वा पुस्तिका प्रकाशित गरेमा त्यस्तो पुस्तक वा पुस्तिकाको दुई प्रति मन्त्रालयमा पठाउनु पर्नेछ ।

(५) कुनै पर्वतारोही दलले आफ्नो पर्वतारोहण सम्बन्धी वृत्तचित्र तयार पारेमा त्यस्तो वृत्तचित्रको एक प्रति मन्त्रालयमा पेश गर्नु पर्नेछ ।

♦३२. <u>सलामी रकममा छुट दिन सक्ने</u>: यस नियमावलीमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि <u>नेपाल सरकार</u>ले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी नेपाली पर्वतारोही दल, विदेशी पर्वतारोही दलसँग सम्मिलित नेपाली पर्वतारोही दलका सदस्य वा देहायका हिमालचुली आरोहण गर्ने जुनसुकै पर्वतारोहीलाई यस नियमावली बमोजिम लाग्ने सलामी दस्तुरमा आंशिक वा पूरै छुट दिन सक्नेछ :

(क) एक आर्थिक वर्षमा तीनभन्दा कम पर्वतारोही दलले आरोहण गर्ने न्यून चाप रहेको हिमालचुली,

(ख) मध्यपश्चिमाञ्चल र सुदूर पश्चिमाञ्चल विकास क्षेत्रमा रहेका हिमालचुली,

(ग) प्राविधिक रुपले सजिलो र छोटो अवधिमा आरोहण गर्न सकिने हिमालचुली,

(घ) नेपाल सरकारले तोकिदिएका खास हिमालचुली,

(ङ) जेठ १५ गतेदेखि भाद्र १५ गतेसम्म र पौष १ गतेदेखि फाल्गुण १५ गतेसम्मको अवधिमा आरोहण गर्ने अन्य जुनसुकै हिमालचुली ।

(ख) आर्थिक तथा सामाजिक विकासको दृष्टिकोणले पिछडिएको क्षेत्रमा रहेका हिमालचुली,

(ग) प्राविधिक रुपले सजिलो र छोटो अवधिमा आरोहण गर्न सकिने हिमालचुली ।

<u>स्पष्टिकरण</u>: यस उपनियमको प्रयोजनको लागि "न्यून चाप रहेको समय" भन्नाले जेष्ठ १५ गतेदेखि भाद्र १५ गतेसम्म र पौष १ गतेदेखि फाल्गुण १५ गतेसम्मको अवधि सम्झनु पर्छ ।

(२) यस नियमावलीमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि <u>नेपाल सरकार</u>ले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी नेपाली पर्वतारोही दल वा विदेशी पर्वतारोही दलसंग

---

♦ पहिलो संशोधनद्वारा संशोधित ।

सम्मिलित नेपाली पर्वतारोही दलका सदस्यलाई यस नियम बमोजिम लाग्ने सलामी रकम आंशिक वा पूरै रुपमा छुट दिन सक्नेछ ।

३३. प्रमाणपत्र दिइने : सफलतापूर्वक पर्वतारोहण गर्ने पर्वतारोही दल वा सो दलका सदस्यलाई मन्त्रालयले अनुसूची -१३ बमोजिमको ढाँचामा पर्वतारोहण प्रमाणपत्र दिनेछ ।

३४. सजाय गर्ने अधिकारी :ऐनको दफा ३८ को उपदफा (७) को प्रयोजनको लागि सजाय गर्ने अधिकारी मन्त्रालयको सचिव हुनेछ ।

३५. अंग्रेजी भाषामा छपाउन र प्रयोग गर्न सक्ने: यस नियमावली अन्तर्गतका फाराम तथा प्रमाणपत्र आवश्कतानुसार अङ्ग्रेजी भाषामा पनि छपाउन र प्रयोग गर्न सकिनेछ ।

३६. अनुसूचीमा हेरफेर वा थपघट गर्न सक्ने : नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी यस नियमावलीका अनुसूचीमा आवश्यक हेरफेर वा थपघट गर्न सक्नेछ ।

३७. खारेजी र बचाउ : (१) पर्वतारोहण सम्बन्धी नियमावली, २०३६ खारेज गरिएकोछ ।

(२) पर्वतारोहण सम्बन्धी नियमावली,२०३६ बमोजिम भए गरेका काम कारवाहीहरू यसै नियमावली बमोजिम भए गरेको मानिने छन् ।

अनुसूची - १

(नियम ३ को उपनियम (१) संग सम्बन्धित)

पर्वतारोहण अनुमतिको लागि दिइने दरखास्त

श्री संस्कृति,पर्यटन तथा नागरिक उडड्यन मन्त्रालय

नेपाल अधिराज्यको................मिटर अग्लो .......................... हिमालचुली सन् २००... को................देखि ....................सम्म आरोहण गर्न इच्छा भएकोले सो हिमालचुली आरोहण गर्न अनुमति पाउनको लागि देहायका विवरण खुलाई दरखास्त गरेकोछु ।

१. पर्वतारोही दलको नामः
२. पर्वतारोही दलका सदस्यहरूको नाम, संख्या र राहदानी नम्वर :
३. पर्वतारोही दलको नेताः
४. पर्वतारोही दलका सदस्यको मातृभाषाः
५. पर्वतारोही दलका सदस्यको मुलुकको नामः
६. पर्वतारोहणको आयोजकः
७. पर्वतारोहणको उद्देश्यः
८. आरोहण गर्ने हिमालचुलीको नाम र उचाईः
९. पर्वतारोहणको लागि प्रस्थान गर्ने मार्गः
१०. पर्वतारोहण गर्ने मार्गः
११. पर्वतारोहण गरिने समय र अवधिः
१२. सरदार,पर्वतीय पथ प्रदर्शक,उचाईमा जाने कामदार, आधार शिविरका कामदार तथा स्थानीय कामदारको अनुमानित संख्याः
१३. आधार शिविरभन्दा माथि जाने कामदार तथा अन्य व्यक्तिहरूको संख्याः
१४. पर्वतारोहणको लागि गरिने अनुमानित खर्च र खर्चको श्रोतः
१५. प्रयोग गरिने मालसामानको अन्दाजी वजन र संख्याः
१६. काठमाडौंमा सम्पर्क गर्ने माध्यमः
१७. पर्वतारोहण सम्बन्धी आवश्यक व्यवस्थापन मिलाउने ट्रेकिङ्ग एजेन्सीको नाम, ठेगाना :
१८. पर्वतारोहण सम्बन्धी सामान ओसार्ने साधनः
    (क) नेपाल अधिराज्य बाहिरः
    (ख) नेपाल अधिराज्य भित्रः
१९. प्रयोग गर्ने सञ्चार साधनको किसिम र संख्याः

२०. अन्य आवश्यक कुराहरूः-
    (क)
    (ख)

दरखास्त दिनेको,-
सहीः-
नाम :-
ठेगाना :-
(क) कार्यालय :-(फोन नं., फ्याक्स, इमेल)
(ख) निवास :- (फोन नं., फ्याक्स, इमेल)

पत्राचार गर्ने ठेगाना :-
मिति :-

दरखास्तसाथ पेश गर्नु पर्ने कागजातः
हिमालचुली रहेको इलाकाको नक्सा

## ♦अनुसूची-२
(नियम ३ को उपनियम (२) संग सम्वन्धित)

संख्याः-

<u>पर्वतारोहणको लागि दिइने अनुमति</u>

श्री ............................

तपाईलाई नेपाल सरहदको ........................... हिमालचुलीको (नाम र उचाई) आरोहण गर्न अनुमति दिइएकोछ ।

१. पर्वतारोही दलको नाम :
२. पर्वतारोही दलको नेताको नाम :
३. पर्वतारोही दलका सदस्यहरुको नाम :
४. पर्वतारोही दलको सदस्य संख्या :
५. पर्वतारोही दलका सदस्यहरुको मुलुक र राहदानी नम्बर :
६. पर्वतारोही दलको काठमाण्डौ स्थित सम्पर्क कार्यालय :
७. पर्वतारोही दलले प्रयोग गर्ने लस्कर मार्ग :
८. पर्वतारोही दलले प्रयोग गर्ने आरोहण मार्ग :
९. आरोहणको मान्य अवधि :
१०. आरोहणको निमित्त काठमाण्डौबाट प्रस्थान हुने मिति :

<u>अनुमति दिने अधिकारीको,</u>

<u>कार्यालयको छाप</u>

सही :-
नाम :-
पद :-
कार्यालयः-
मिति :-

♦ पहिलो संशोधनद्वारा संशोधित ।

अनुसूची - ३

(नियम ३ को उपनियम (३) संग सम्बन्धित)

पत्र संख्या :

प्रारम्भिक पर्वतारोहण अनुमति

श्री ....................................................

..............................................................

तपाईलाई निम्न हिमालचुली आरोहण गर्ने प्रयोजनको लागि देहाय बमोजिम प्रारम्भिक पर्वतारोहण अनुमति दिइएकोछ :-

१. पर्वतारोही दलको नाम :-
२. पर्वतारोहण गर्ने हिमालचुलीको नाम र उचाई :-
३. पर्वतारोहण गर्ने मार्ग :-
४. पर्वतारोहण गर्नको लागि प्रस्थान गर्ने लश्कर मार्ग :-
५. सलामी बापत बुझाउनु पर्ने बाँकी रकमः-
६. प्रारम्भिक पर्वतारोहण अनुमतिको मान्य अवधि :-

कार्यालयको छाप

अनुमति प्रदान गर्ने अधिकारीको,-
सहीः-
नामः-
पदः-
कार्यालयः-

मितिः-

अनुसूची – ४
(नियम ४ को उपनियम (१) सँग सम्बन्धित)

पर्वतारोहणको लागि लाग्ने सलामी रकम

(क) सगरमाथा हिमालचुलीको लागि:

(१) सामान्य मार्ग (दक्षिण पूर्वीधार) बाहेक अन्य मार्गबाट पर्वतारोहण गर्ने सात जनासम्म सदस्य रहेको पर्वतारोही दलको लागि पचास हजार अमेरिकी डलर सलामी रकम लाग्नेछ ।

(२) सामान्य मार्ग (दक्षिण पूर्वीधार) बाट पर्वतारोहण गर्ने पर्वतारोही दलको लागि देहाय बमोजिमको सलामी रकम लाग्नेछः-

| पर्वतारोही दलको सदस्य संख्या | सलामी रकम (अमेरिकी डलरमा) |
|---|---|
| एक सदस्य | २५,००० |
| दुई सदस्य | ४०,००० |
| तीन सदस्य | ४८,००० |
| चार सदस्य | ५६,००० |
| पाँच सदस्य | ६०,००० |
| छ सदस्य | ६६,००० |
| सात सदस्य | ७०,००० |

(३) पर्वतारोही दलमा उपखण्ड (१) र (२) मा लेखिए देखि बाहेक पाँच जनासम्म सदस्य थप गर्न सकिनेछ र त्यसरी सदस्य थप गर्दा प्रति सदस्य दश हजार अमेरिकी डलर थप सलामी रकम लाग्नेछ ।

(ख) अन्य हिमालचुलीको लागि:

(१) अन्य हिमालचुलीको लागि देहाय बमोजिमको सलामी रकम लाग्नेछ :-

| हिमालचुलीको नाम | सातजना सम्म सदस्यको लागि सलामी रकम (अमेरिकी डलरमा) | प्रति सदस्य थप सलामी रकम (अमेरिकी डलरमा) |
|---|---|---|
| ८,००० मिटर भन्दा माथि (सगरमाथा बाहेक) | १०,००० | १,५०० |
| ७,५०१ मिटर देखि ८,००० मिटर सम्म | ४,००० | ५०० |
| ७,००१ मिटर देखि ७,५०० मिटर सम्म | ३,००० | ४०० |
| ६,५०१ मिटर देखि ७,००० मिटर सम्म | २,००० | ३०० |
| ६,५०१ मिटर भन्दा कम उचाईका हिमालचुली | १,००० | २०० |

(२) पर्वतारोही दलमा उपखण्ड (१) मा लेखिएदेखि बाहेक पाँच जनासम्म सदस्य थप गर्न सकिनेछ ।

द्रष्टव्य : कुनै पर्वतारोही दलले यस नियमावली बमोजिम सलामी रकम बुझाई मन्त्रालयबाट पर्वतारोहण सम्बन्धी जानकारी (विफ्रिङ) लिनु अघि सलामी रकममा हेरफेर भएमा सो हेरफेर भएको सलामी रकम बुझाउनु पर्नेछ ।

अनुसूची - ५

(नियम १० सँग सम्बन्धित)

सम्पर्क अधिकृतलाई दिनुपर्ने सुविधा

सम्पर्क अधिकृतलाई दिनुपर्ने सुविधा देहाय बमोजिम हुनेछ :-

(क) दैनिक भत्ता पाँचसय रुपैयाँ,

(ख) नयाँ र पर्वतारोही दलका सदस्यले प्रयोग गरेका वा समान गुणस्तरको कम उचाईमा प्रयोग हुने एक र आधार शिविरमा प्रयोग हुने एक गरी स्लिपिंग बैग थान दुई, ऊनी ट्राउजर वा निकर थान दुई, उनी मोजा चार जोर, पञ्जा एक जोर, हिउँमा लगाउने जुत्ता एक जोर, ट्रकिङ्ग जुत्ता एक जोर, गेटर एक जोर, फेदर ज्याकेट एक, विण्ड ज्याकेट एक, विण्ड ट्राउजर एक, डाउन पेण्ट एक, स्वीटर एक, ऊनी कमीज दुई, ऊनी टोपी एक, हावा वा रवरको डसना एक, रुकस्याक एक, हिउँमा लगाउने चस्मा एक, छाता वा रेनकोट एक,

(ग) पर्वतारोहण अवधिभर प्रयोग गर्ने पाल थान एक,

(घ) खाना, औषधि र औषधि उपचारका सरसामान,

(ङ) भरियाको सुविधा ।

अनुसूची - ६

(नियम १६ सँग सम्बन्धित)

सरदार, पर्वतीय पथप्रदर्शक, उचाईमा जाने कामदार, आधार शिविरका कामदार र स्थानीय कामदारलाई दिनुपर्ने सुविधा

(क) सरदार, पर्वतीय पथ प्रदर्शक, उचाईमा जाने कामदार र आधार शिविरका कामदारलाई दिनु पर्ने सुविधाः

(१) दैनिक भत्ता :-

(क) सरदारलाई दैनिक चारसय रुपैंयाँ,

(ख) पर्वतीय पथ प्रदर्शक र उचाईमा जाने कामदारलाई दैनिक तीनसय पचास रुपैयाँ,

(ग) आधार शिविरका कामदारलाई दैनिक तीनसय रुपैयाँ,

(२) मालसामान :-

(क) नयाँ र पर्वतारोही दलका सदस्यले प्रयोग गरेका वा समान गुणस्तरका कम उचाईमा प्रयोग हुने एक र आधार शिविरमा प्रयोग हुने एक गरी स्लिपिंग बैग थान दुई, ऊनी ट्राउजर वा निकर थान दुई, ऊनी मोजा चार जोर, हिउँमा लगाउने पञ्जा दुई जोर, हिउँमा लगाउने जुत्ता एक जोर, गेटर एक जोर, फेदर ज्याकेट एक, विण्ड ट्राउजर एक, विण्ड पेण्ट एक, डाउन पेण्ट एक, स्वीटर एक, ऊनी कमीज दुई, ऊनी टोपी एक, हावा वा रबरको डसना एक, रुकस्याक एक, हिउँमा लगाउने चस्मा एक, छाता वा रेनकोट एक, आइस एक्स एक,

(ख) पर्वतारोहण अवधिभर प्रयोग गर्ने पाल थान एक,

(ग) खाना, औषधि र औषधि उपचारका सरसामान,

(घ) आरोहणमा आवश्यक पर्ने अन्य उपकरणहरू ।

(ख) स्थानीय कामदारलाई दिनु पर्ने सुविधा

(१) ३७०० मीटरसम्मको उचाइमा जाने कामदारलाई दैनिक दुईसय रुपैयाँ र सो भन्दा माथिको उचाईमा जाने कामदारलाई दैनिक दुईसय पचास रुपैयाँ,

(२) एक जोर जुत्ता, एउटा ओढ्ने कपडा वा ज्याकेट, ऊनी ट्राउजर एक, ऊनी कमीज एक, स्वीटर एक र पंजा एकजोर ।

अनुसूची - ७
(नियम १७ सँग सम्बन्धित)

<u>इच्छापत्र</u>

लिखितम् ......................छोरा / छोरी … … … … अञ्चल… …
… … जिल्ला … … … …गा.वि.स./ न.पा. वडा नं. …. … … …
दा. …… … … … गाउँ/टोल बस्ने … … … वर्ष … … को … … …
…… … … आगे … … … …… … … … पर्वतारोही दलसंग …
… … …… … … हिमालचुली आरोहण गर्न सो दलसंग जांदा … …
… …… वा काम गर्दा दुर्घटनामा परी मेरो मृत्यु हुन गएमा यस नियमावलीमा
वा. उल्लेख भए बमोजिम … … … …… … … … बीमा कम्पनीबाट पाउने
बीमा रकम बीमा लेखमा इच्छाएको व्यक्तिलाई र … … … …… … … …
पर्वतारोही दलबाट पाउने अन्य क्षतिपूर्तिको रकम मेरो शेषपछि … … … ……
… … … अञ्चल … … … … जिल्ला… … … … …
गा.वि.स./न.पा. वडा नं. .. … बस्ने व्यक्ति मेरो छोरा/छोरी/स्वास्नी… … ……
दिइयोस् । कथंकदाचित मैले इच्छा गरेको व्यक्ति फेला नपरेमा वा मरेमा मेरो एकाघरको परिवारको अन्य कुनै पनि सदस्यलाई दिइएमा मेरो मञ्जुर छ भनी मेरो खुशीराजीसंग यो इच्छापत्र लेखी यसको तीनप्रति बनाई मैले काम गर्ने … … …… … … … संस्था वा कार्यालय/ नेपाल सरकारको सम्बन्धित मन्त्रालय / नेपाल पर्वतारोहण संघमा एक प्रति पेश गरेको छु । साक्षी किनारामा लेखिएको सदर । इति सम्बत. २० …. साल …….. महिना ……….. गते रोज …………… शुभम् -------------------

दा. वा.

अनुसूची-८

(नियम १८ सँग सम्बन्धित)

पर्वतारोही दल /पर्वतारोहणको व्यवस्था मिलाउने संस्था र पर्वतारोहणको काममा संलग्न व्यक्ति बीच भएको करार

..................................पर्वतारोही दल/पर्वतारोहणको व्यवस्था मिलाउने संस्था र..................................हिमालचुली आरोहण गर्ने .........................पर्वतारोही दलसंग जाने ...........................छोरा / छोरी जिल्ला ......................गाउं विकास समिति/नगरपालिका वडा नं. ............बस्ने वर्ष ............. को .............बीच सो पर्वतारोहण सम्बन्धी काममा जानको लागि देहाय बमोजिमको सुविधा लिने दिने गरी आपसी मञ्जुरीले यो करार भएको छ ।

पर्वतारोही दलबाट दिइने सुविधाहरू

(क)

(ख)

पर्वतारोहणको काममा जाने कामदारको,-
सही :

नाम :
ठेगानाः

पर्वतारोही दल /पर्वतारोहणको व्यवस्था मिलाउने
संस्थाको तर्फबाट,-

सही :
नाम :
पद :
ठेगानाः

ईति सम्वत् .......... साल..........महिना...........गते रोज ......... शुभम् ।

अनुसूची-९
(नियम २६ को उपनियम (१) संग सम्बन्धित)

फोहरमैला व्यवस्थापनको लागि राख्नु पर्ने धरौटी रकम

पर्वतारोही दलले फोहरमैला व्यवस्थापन बापत देहाय बमोजिम रकम धरौटी राख्नु पर्नेछः-

(क) खुम्बु र अन्नपूर्ण हिमश्रृंखलाका देहायका हिमालचुलीको लागि,-

| | |
|---|---|
| सगरमाथाको लागि- | चार हजार अमेरिकी डलर वा सो बराबरको नेपाली रुपैयाँ । |
| सगरमाथा बाहेकको ८००१ मीटर भन्दा अग्ला अन्य हिमालचुलीको लागि- | तीन हजार अमेरिकी डलर वा सो बराबरको नेपाली रुपैयाँ । |
| ७००१ मीटर देखि ८००० मीटरसम्मका हिमालचुली र अमाडब्लम हिमालचुलीको लागि- | दुई हजार अमेरिकी डलर वा सो बराबरको नेपाली रुपैयाँ । |
| ६५०१ मीटर देखि ७००० मीटरसम्मका हिमालचुलीको लागि- | एक हजार अमेरिकी डलर वा सो बराबरको नेपाली रुपैयाँ । |
| ६५०० मीटर भन्दा मुनिका हिमालचुलीका लागि- | पाँच सय अमेरिकी डलर वा सो बराबरको नेपाली रुपैयाँ । |

(ख) खण्ड (क) बाहेकका अन्य हिमश्रृंखलाका देहायका हिमालचुलीको लागि,-

| | |
|---|---|
| ८००० मीटर भन्दा अग्ला अन्य हिमालचुलीको लागि- | तीन हजार अमेरिकी डलर वा सो बराबरको नेपाली रुपैयाँ । |
| ८००० मीटर भन्दा मुनिका हिमालचुलीको लागि- | पाँच सय अमेरिकी डलर वा सो बराबरको नेपाली रुपैयाँ |

## अनुसूची- १०

(नियम २७ को उपनियम (२) संग सम्बन्धित)

### फोहरमैला अन्तर्गत पर्ने वस्तुहरू

देहायका फोहरमैला अन्तर्गत देहायका वस्तुहरू पर्नेछन्:-

(क) नष्ट गर्ने सकिने फोहरमैला : ट्वाइलेट पेपर, कागजहरू, कार्डबोर्ड, वाँसबाट निर्मित सामान, जुट र सुतिका झोला, सडेगलेका खानेकुरा♦ ।

(ख) पुनः प्रशोधन गर्न सकिने फोहरमैला : टीन, शिसी, जार, प्लाष्टीकका वट्टाहरू, प्लाष्टीकका सीट, पुनः प्रयोग गर्न सकिने ग्यास सीलिण्डर, प्लाष्टीकका झोला वा ग्यास कन्टेनर ।

(ग) पुनः निकासी गर्नु पर्ने फोहरमैला: प्रयोग गरिसकिएका अक्सिजनका वोटल, प्रयोग गरिएका व्याट्रि, आरोहण गर्न आवश्यक पर्ने औजार वा निजी प्रयोगका सामान इत्यादि ।

♦ पहिलो संशोधनद्वारा “वा मृत शरीर” भन्ने शब्द झिकिएको ।

अनुसूची– ११
(नियम ३० सँग सम्बन्धित)

<u>सम्पर्क अधिकृतले पेश गर्नु पर्ने प्रतिवेदन</u>

१. पर्वतारोही दलको-
   (क) नाम:
   (ख) पर्वतारोही दलमा रहने सदस्यहरूको संख्या :
   (ग) नेताको नाम:
२. पर्वतारोही दलमा संलग्न सरदार, पर्वतीय पथ प्रदर्शक तथा आधार शिविरका कामदारको संख्या :
३. ट्रेकिङ्ग एजेन्सीको नाम :
४. पर्वतारोहण गरेको हिमालचुलीको नाम:
५. पर्वतारोहण सम्बन्धी ब्रिफिङ्ग भएको दिन:
६. पर्वतारोहणको लागि काठमाण्डौबाट प्रस्थान गरेको मिति :
७. प्रस्थानको माध्यम:
८. यात्राको दैनिक विवरण : (छुट्टै पृष्ठमा भर्नु पर्ने)
   <u>(ठाउँ)</u> <u>मिति</u> <u>दिन</u>

९. आधार शिविरमा पुगेको दिन :
१०. आधार शिविरमा भेटेका अरु सम्पर्क अधिकृत र दलहरूको नाम:
११. पर्वतारोहण अवधिमा उठेका समस्या र सो समाधानको लागि गरिएको प्रयास सम्बन्धी विवरण ।
१२. पर्वतारोहण अवधिमा कुनै दुर्घटना घटेको भए वा पर्वतारोही दलको सामान हराएको भए सो को विवरण :
१३. आधार शिविरमा विताएको दिन :
१४. आधार शिविरबाट तल ओर्लेको भए त्यसको कारण र विवरण (आवश्यकता अनुसार छुट्टै पृष्ठ प्रयोग गर्ने)
   <u>ठाउँ</u> <u>मिति</u> <u>दिन</u>

१५. आधार शिविर पुनः फर्केको मिति :
१६. आधार शिविरमा अनुपस्थित भएको भए त्यस्तो दिन र कारण :
१७. मन्त्रालयमा समाचार पठाएको मिति :
१८. लस्कर मार्ग तथा पुलपुलेसाहरूको अवस्था :
१९. लस्कर मार्गमा उपलव्ध सेवाको अवस्था र स्तर :
   (क) होटल, लज, गेष्ट हाउस आदि :-
   (ख) स्थानीय कामदार :-
   (ग) अन्य :-

२०. आधार शिविरबाट प्रस्थान मिति :

२१. पर्वतारोहणका परिणाम : -मिति, समय सहित प्रत्येक पर्वतारोहीहरूका सदस्यको विवरण भर्ने, अर्को छुट्टै पृष्ठमा)

२२. काठमाण्डौ फर्केको मिति :

२३. पेश गर्नु पर्ने कागजात:

(क) यात्रा गरेको टिकट (आते जाते)

(ख) यात्रा गरेको महत्वपूर्ण ठाउँ तथा आधार शिविरको फोटो :

(ग) पर्वतारोही दलका सदस्य समेत उपस्थित भएको आधार शिविरको फोटो ।

(घ) पर्वतारोही दलको नेताको प्रतिवेदन :-

(ङ) अन्य कुनै कुरा सुझाव भए त्यसको प्रतिवेदन ।

प्रतिवेदन पेश गर्ने सम्पर्क अधिकृतको

सही :

नाम :

कार्यालय

फोन नं. (कार्यालय)

फ्याक्स

फोन नं.(निवास)

मितिः

## अनुसूची - १२
(नियम ३१ को उपनियम (१) संग सम्बन्धित)

### पर्वतारोहण दलका नेताले पेश गर्नु पर्ने प्रतिवेदन

१. पर्वतारोहणको नाम :-
२. पर्वतारोही दलको नेताको नाम :-
३. पर्वतारोही दलका सदस्यको संख्या :-
४. पर्वतारोही दलको सदस्यको राष्ट्रियता :-
५. पर्वतारोहण गरिएको हिमालचुलीको नाम र उचाई :-
६. अनुमति पाएको मिति :-
७. पर्वतारोहणको अवधि :-
८. पर्वतारोही दल काठमाण्डौं आइपुगेको मिति :-
९. पर्वतारोहणको लागि काठमाण्डौंबाट प्रस्थान गरेको मिति :-
१०. पर्वतारोही दल काठमाण्डौं फर्केको मिति :-
११. पर्वतारोहणको सफल वा असफल :-
१२. कुन स्थानसम्म पर्वतारोहण गरेको हो त्यसको उचाई र मिति :-
१३. सफलतापूर्वक आरोहण गर्ने पर्वतारोहण दलमा खटाउनेको नाम :-
१४. सम्पर्क अधिकृतको नाम :-
१५. सरदार तथा अन्य कामदारको संख्या र नाम :-
१६. आधार शिविरभन्दा माथि गएका सदस्यको संख्या :-
१७. काममा लगाइएका स्थानीय कामदारको संख्या :-
१८. पर्वतारोहणको लागि भएको कूल खर्च :-
१९. नेपाल अधिराज्यभित्र खर्च भएको रकम :-
२०. पर्वतारोहणको अवधिमा कुनै दुर्घटना घटेको भए त्यसको विवरण :-
२१. पर्वतारोही दलमा संलग्न व्यक्तिको कार्य सम्पादन प्रतिवेदन :-
    (क) सम्पर्क अधिकृत :
    (ख) सरदार :
    (ग) ट्रेकिङ एजेन्सी :
    (घ) संलग्न कामदारः
२२. कुनै सुझाव भएः-

पर्वतारोही दलको नेताको,
सही :-
नाम :-
मिति :-

अनुसूची - १३

(नियम ३३ सँग सम्बन्धित)

<u>पर्वतारोहण प्रमाण-पत्र</u>

विक्रम सम्बत् २० ---- साल–––––महिना ––––गते (                    ) मा -- निवासी श्री ----------------------------- ले श्री ------------------ को नेतृत्वमा ----------------------------------------नामक पर्वतारोही दलको ------------------- को हैसियतले ------------ मिटर अग्लो -------------- हिमालचुली सफलतापूर्वक आरोहण गरेको हुँदा यो प्रमाणपत्र प्रदान गरिएकोछ ।

<u>कार्यालयको छाप</u>

प्रमाणपत्र दिने अधिकारीको,-

सहीः-

नाम :-

पद :-

कार्यालय :-

मिति :-